# नेपाल विद्यार्थी संघ

## नियमावली

(परिमार्जित तथा संशोधित २०७० )

नेपाल विद्यार्थी संघ धोविधारा काठमाण्डौ
फोन नं.०१४४२५९४१ /९८५११२९९३०
**Fax No. 014433300**
**Email: 2027nepalstudentunion@gmail.com**
**www.nsu.org.np**

# नेपाल विद्यार्थी संघ

## नियमावली ( परिमार्जित तथा संशोधित २०७० )

**प्रस्तावना :**

नेपाल विद्यार्थी संघको सिद्दान्त र उद्देश्यलाई कार्यरुप प्रदान गरी व्यवस्थित र अनुशासित संगठन निर्माण गर्न जरुरी भएको हुंदा नेपाल विद्यार्थी संघको विधानमा व्यवस्था भए बमोजिम विभिन्न निकायहरुको व्यवस्थित संचालनका लागि नेपाल विद्यार्थी संघको विधान २०२७ (परिमार्जित र संशोधित २०६७) को भाग ९ धारा ३७ को **" बाधा अड्काउ फुकाउने अधिकार "** को प्रयोग गरि यो नियमावली जारी गरिएको छ ।

## परिच्छेद १

**संक्षिप्त नाम र प्रारम्भ**

क) यो नियमावलीको नाम नेपाल विद्यार्थी संघको नियमावली २०७० हुनेछ ।

ख) यो नियमावली, नेपाल विद्यार्थी संघ केन्द्रीय कार्य समितिले पारित गरे पछि तुरुन्तै लागू हुनेछ ।

## परिच्छेद २

**परिभाषा : विषय वा प्रसंगले अर्को अर्थ नलागेमा :**

क) ने. वि. संघ भन्नाले नेपाल विद्यार्थी संघ भन्ने बुझ्नु पर्दछ ।

ख) केन्द्रीय कार्य समिति भन्नाले विधान बमोजिम गठित नेपाल विद्यार्थी संघको केन्द्रीय कार्य कारिणी निकाय भन्ने बुझिन्छ ।

ग) विधान भन्नाले नेपाल विद्यार्थी संघको विधान २०२७ ( परिमार्जित तथा संशोधित २०७०) बुझ्नुपर्दछ ।

## परिच्छेद ३

**मा. वि. एकाई**

१. माध्यामिक विद्यालयमा संगठन सुदृढ गर्ने उद्देश्यले मा. वि. मा अध्ययनरत नेपाल विद्यार्थी संघको साधारण सदस्यहरु मध्येबाट ने. वि. संघ मा. वि. एकाई गठन गरिनेछ ।

२. क्षेत्रिय कार्य समितिको प्रतिनिधिको पर्यवेक्षणमा मा. वि. एकाईको अध्यक्षको चयन मा. वि. का साधारण सदस्यहरुको भेलाबाट हुनेछ ।

३. बांकी पदाधिकारी तथा सदस्यहरुको चयन गरि २५ प्रतिशत छात्रा सहित समावेशी प्रनिनिधित्व रहेको ११ सदस्यीय एकाई स्वयं अध्यक्षले घोषणा गर्ने छ ।

४. मा. वि. एकाईको बैठक कम्तीमा २ महिनाको एक पटक बस्नु पर्नेछ ।

५. प्रत्येक मा. वि. एकाईका अध्यक्ष, १ जना छात्रा १ अन्य समावेशी सहित जम्मा ५ जना क्षेत्रिय प्रतिनिधिहरुले क्षेत्रिय अधिवेशनमा प्रतिनिधित्व गर्नेछन् ।

**स्पष्टीकरण :** अन्य समावेशी अन्तर्गत आदीवासी जनजाती, दलित, मधेशी, मुस्लिम, अल्पसंख्यक, पिछडिएको वर्ग, अपाङ्ग पर्दछन् ।

**नोट** : मा. वि. र उ. मा. वि. एउटै समयमा संचालन भएमा मा. वि. र उ. मा. वि. मा एउटै एकाई कियाशील रहनेछ । त्यस्ता एकाईबाट अध्यक्ष, १ जना छात्रा १ अन्य समावेशी सहित जम्मा ७ जना क्षेत्रिय प्रतिनिधिहरुले क्षेत्रिय अधिवेशनमा प्रतिनिधित्व गर्नेछन् ।

## परिच्छेद ४

**उच्च मा. वि. एकाई**

१. उच्च मा. वि. मा अध्ययनरत सम्पुर्ण ने. वि. संघ सदस्यहरुको उपस्थितिमा क्षेत्रिय समितिका प्रतितिधिको पर्यवेक्षणमा उच्च मा.वि. एकाईको गठन गरिने छ ।

२. एकाई गठन गर्ने क्रममा उपस्थित सदस्यहरुले अध्यक्षको चयन गर्ने छ, बांकी पदाधिकारी तथा सदस्यहरु रहेको १५ सदस्यीय एकाई स्वयं अध्यक्षले घोषणा गर्ने छ ।

३. एकाईमा २५ प्रतिशत छात्रा सहित समावेशी प्रतिनिधित्व हुनुपर्नेछ ।

४. एकाईले संगठन विस्तारको लागि आफनो कार्य क्षेत्रमा विभिन्न उपसमितिहरु बनाउन सक्नेछ ।

५. प्रत्येक मा. वि. एकाईका अध्यक्ष सहित १ जना छात्रा १ अन्य समावेशी सहित जम्मा ५ जना क्षेत्रिय प्रतिनिधिले क्षेत्रिय अधिवेशनमा प्रतिनिधित्व गर्नेछन् ।

## परिच्छेद ५

**CTEVT क्याम्पस एकाई :**

१ CTEVT क्याम्पसमा अध्ययनरत सम्पुर्ण ने. वि. संघ सदस्यहरुको उपस्थितिमा ने. वि. संघ CTEVT एकाईको गठन गरिने छ ।

२. CTEVT समन्वय समितिको रोहवरमा TSLC अन्तर्गत क्याम्पसमा क्षेत्रिय समितिले र डिप्लोमा अन्तर्गत क्याम्पसमा जिल्ला समितिले ने. वि. संघ CTEVT एकाईको गठन गरिने छ ।

३. एकाई गठन गर्ने क्रममा उपस्थित सदस्यहरुले अध्यक्षको चयन गर्ने छ, बांकी पदाधिकारी तथा सदस्यहरु रहेको १५ सदस्यीय एकाई स्वयं अध्यक्षले घोषणा गर्ने छ ।

४. एकाईमा २५ प्रतिशत छात्रा सहित समावेशी प्रतिनिधित्व हुनुपर्नेछ ।

५. एकाईले संगठन विस्तारको लागि आफनो कार्य क्षेत्रमा विभिन्न उपसमितिहरु बनाउन सक्नेछ ।

६. CTEVT अन्तर्गतका TSLC कोर्समा अध्ययनरत ने. वि. संघ CTEVT एकाईबाट अध्यक्ष, १ छात्रा सहित ३ जनाले क्षेत्रिय अधिवेशनमा प्रतिनिधित्व गर्ने छन् ।

७. CTEVT अन्तर्गतका डिप्लोमा कोर्समा अध्ययनरत ने. वि. संघ CTEVT एकाईबाट अध्यक्ष, १ छात्रा सहित ३ जनाले जिल्ला अधिवेशनमा प्रतिनिधित्व गर्ने छन् ।

## परिच्छेद ६

**क्षेत्रिय समितिको नियमावली**

**क्षेत्रिय सभा**

क्षेत्रिय सभाको गठन निम्न अनुसार गरिने छ ।

१. प्रत्येक मा. वि. एकाईका अध्यक्ष सहित १ जना छात्रा, १ अन्य समावेशी सहित जम्मा ५ जना क्षेत्रिय प्रतिनिधि ।

२. प्रत्येक उ. मा. वि. एकाईका अध्यक्ष सहित १ जना छात्रा, १ अन्य समावेशी पर्ने गरि जम्मा ५ जना क्षेत्रिय प्रतिनिधि ।

३. CTEVT अन्तर्गतका TSLC कोर्सको अध्ययन अध्यापन गराइने क्याम्पसका ने. वि. संघ एकाईबाट अध्यक्ष, १ छात्रा सहित ३ जना प्रतिनिधि ।

४. ने. वि. संघ क्षेत्रिय अध्यक्षबाट मनोनित ५ जना प्रतिनिधि ।

५. क्षेत्रिय समितिका पदाधिकारी एवं सदस्यहरु स्वतः प्रतिनिधि रहनेछन् ।

६. क्षेत्रिय सभाले ४ जना छात्रा सहित थप ७ जना अन्य समावेशी प्रतिनिधित्व हुनेगरि २५ जना जिल्ला अधिवेशन प्रतिनिधि निर्वाचन गर्नेछ ।

७. क्षेत्रिय समिति मार्फत अध्यक्ष सहित समावेशी प्रतिनिधित्व हुने गरि ५ जनाले जिल्ला अधिवेशनमा प्रतिनिधित्व गर्ने छ ।

**क्षेत्रिय समिति :**

१. नेपाल अधिराज्यको प्रत्येक निर्वाचन क्षेत्रमा ने. वि. संघको १ अध्यक्ष, १ जना सचिव र ९ जना सदस्यको निर्वाचन गर्ने छ । तर एक मात्र संसदिय निर्वाचन क्षेत्र रहेको जिल्लाहरुमा क्षेत्रिय समिति गठन गरिने छैन ।

२. ९ जना सदस्यहरुमा छात्रा २, आदिवासी जनजाती १, दलित, अपांग, मुस्लिम, मधेशी, अल्पसंख्यक मध्येबाट १ , मा. वि. एकाईबाट १ , उ.मा. वि. एकाई बाट १ र खुला तर्फ ३ सदस्यको निर्वाचन गर्ने छ ।

३. क्षेत्रिय अध्यक्षले क्षेत्रिय प्रतिनिधि मध्येबाट ६ जना सदस्य समावेशी रुपमा मनोनित गर्नेछ ।

४. पदाधिकारीको चयन जिल्ला समितिको प्रतिनिधिको रोहवरमा क्षेत्रिय अध्यक्षले घोषणा गर्नेछन् ।

५. क्षेत्रिय समितिले आफ्ना मातहत निकायहरुमा समन्वय राखी प्रभावकारी रुपमा संगठन विस्तार गर्नेछ ।

६. क्षेत्रिय समितिको बैठक प्रत्यक २ महिनामा बस्नु पर्नेछ ।

७. क्षेत्रिय अध्यक्ष पदेन महाधिवेशन प्रतिनिधि हुनेछन् साथै जिल्ला समितिको पदेन सदस्य हुनेछन् ।

# परिच्छेद ७

**कक्षा एकाई**

१. क्याम्पसका विभिन्न तहहरु स्नातक, स्नातकोत्तरका विभिन्न शैक्षिक वर्षका प्रथम वर्ष, द्बितिय वर्ष, तृतिय वर्ष, चतुर्थ वर्ष  अनिवार्य विषय अध्यापन गराइने सबै कक्षाहरुमा साधारण सदस्यहरु मध्येबाट ७ देखि ११ सदस्यीय Section एकाईको गठन गरिने छ ।

२. प्रत्येक क्याम्पस Section बाट देहाय बमोजिम प्रतिनिधिहरुले सदस्य संख्याको आधारमा क्याम्पस सभामा प्रतिनिधित्व गर्न पाउने छन् ।

क. प्रति २५ साधारण सदस्यबाट १ जना

ख. Section एकाईले अध्यक्ष समेत आफुहरु मध्येबाट समावेशी प्रतिनिधित्व हुने गरी ५ जना

ग. उपरोक्त (क) र (ख) बमोजिम प्रतिनिधित्व गर्ने प्रतिनिधिहरु मा २५ प्रतिशत छात्रा सहित समावेशी प्रतिनिधित्व अनिवार्य रुपमा रहनु पर्नेछ ।

घ. १०० भन्दा कम विद्यार्थी संख्या भएको क्याम्पसमा साधारण सदस्यता लिएका सम्पूर्ण विद्यार्थीको १० प्रतिशत प्रतिनिधि रहनेछन् ।

**क्याम्पस सभा :**

क्याम्पस सभाको गठन देहाय बमोजिम हुनेछ :

क. प्रत्येक Section बाट क्याम्पस सभाका लागि प्रतिनिधित्व गर्ने प्रतिनिधिहरु

ख. प्रत्येक Section एकाईबाट क्याम्पस सभाका लागि छनौट भएका प्रतिनिधिहरु

ग. क्याम्पस एकाईका वर्तमान पदाधिकारी एवं सदस्यहरु

घ. ने. वि. संघको तर्फबाट स्व. वि. यू. का लागि उम्मेदवार भई विजयी पदाधिकारी एवं सदस्यहरु

**क्याम्पस सभाको अधिकार र दायित्व :**

**१. क्याम्पस एकाई :**

१. अधिकार प्राप्त माथिल्लो निकायबाट तोकिएको प्रतिनिधिको पर्यवेक्षकत्वमा क्याम्पस सभाले क्याम्पस एकाई गठन गर्ने छ ।

२. १०० भन्दा कम विद्यार्थी संख्या भएको क्याम्पसहरुमा साधारण सदस्यहरुको रोहवरमा माथिल्लो निकायबाट तोकिएको प्रतिनिधिको पर्यवेक्षकत्मा क्याम्पस एकाई अध्यक्षको निर्वाचन गर्नेछ । एकाई अध्यक्षले समावेशी प्रतिनिधित्व हने गरि १५ सदस्यीय क्याम्पस एकाई गठन गर्नेछन् ।

३. १००० सम्म विद्यार्थी संख्या भएका क्याम्पसहरुमा क्याम्पस सभाले माथिल्लो निकायको प्रतिनिधिको रोहवरमा निर्वाचन प्रक्रियाद्वारा क्याम्पस एकाईको अध्यक्ष १ जना, सचिव १ जना र ११ जना सदस्यको निर्वाचन गर्ने छ

४. ११ जना सदस्यहरुमा छात्रा २ , अन्य समावेशी तर्फ ३ र  खुला तर्फ ६ सदस्यको निर्वाचन गर्नेछ ।

५.  एकाई अध्यक्षले प्रतिनिधि मध्येबाट ८ जना सदस्य समावेशी रुपमा मनोनित गर्नेछन् ।

६. एकाई अध्यक्षले सदस्यहरु मध्येबाट १ उपाध्यक्ष, १ सहसचिव, १ कोषाध्यक्ष मनोनित गर्नेछन् ।

७. ३००० सम्म विद्यार्थी संख्या भएका क्याम्पसहरुमा क्याम्पस सभाले माथिल्लो निकायको प्रतिनिधिको रोहवरमा निर्वाचन प्रक्रियाद्वारा क्याम्पस एकाईको अध्यक्ष १ जना, सचिव १ जना र १५ जना सदस्यको निर्वाचन गर्ने छ ।

८. १५ जना सदस्यहरुमा छात्रा ३ , अन्य समावेशी तर्फ ४ र  खुला तर्फ ८ सदस्यको निर्वाचन गर्नेछ ।

९. एकाई अध्यक्षले प्रतिनिधि मध्येबाट १० जना सदस्य समावेशी रुपमा मनोनित गर्नेछन् ।

१०. एकाई अध्यक्षले सदस्यहरु मध्येबाट १ उपाध्यक्ष, १ सहसचिव, १ कोषाध्यक्ष मनोनित गर्नेछन् ।

११. ५००० भन्दा बढी विद्यार्थी संख्या भएका क्याम्पसहरुमा क्याम्पस सभाले माथिल्लो निकायको प्रतिनिधिको रोहवरमा निर्वाचन प्रक्रियाद्वारा क्याम्पस एकाईको अध्यक्ष १ जना, सचिव १ जना र २१ जना सदस्यको निर्वाचन गर्ने छ

१२. २१ जना सदस्यहरुमा छात्रा ४ , अन्य समावेशी तर्फ ५ र  खुला तर्फ १२ सदस्यको निर्वाचन गर्नेछ ।

१३. एकाई अध्यक्षले प्रतिनिधि मध्येबाट १२ जना सदस्य समावेशी रुपमा मनोनित गर्नेछन् ।

१४. एकाई अध्यक्षले सदस्यहरु मध्येबाट १ उपाध्यक्ष, १ सहसचिव, १ कोषाध्यक्ष मनोनित गर्नेछन् ।

१५. एकाईको कार्यभार बढीमा १ वर्षको हुनेछ ।

१६. क्याम्पस एकाईको, केन्द्रले आवस्यकता देखेमा बढीमा ६ महिना सम्म एकाई अध्यक्षको म्याद थप्न सक्नेछ ।

१७. कुनै पनि पदाधिकारी क्याम्पसको नियमित विद्यार्थी नरहेको अवस्थामा बढीमा ३ महिनासम्म मात्र आफ्नो पदमा बहाल रहन सक्नेछन् ।

१८. क्याम्पस सभाको अध्यक्षता एकाईका अध्यक्षले गर्नेछन् । सामान्यतया सभाको बैठक ६ महिनामा १ पटक अनिवार्य रुपमा बस्नु पर्ने छ ।

१९. माथि एकाईको संख्या जती सुकै व्यवस्था भए पनि नेपाल विद्यार्थी संघका साथीहरुको आम सहमतिमा आवस्यकता अनुसारको संख्यामा एकाई क्रियाशील गराउन सकिने छ ।

**२. स्ववियू निर्वाचन हुने क्याम्पस इकाईबाट, जिल्ला अधिवेशन प्रतिनिधि निम्नानुसार हुनेछन् :**

क. ७ सदस्यीय स्ववियू निर्वाचन हुने क्याम्पस एकाईबाट १ जना छात्रा, १ समावेशी सहित ६ जना

ख. ११ सदस्यीय स्ववियू निर्वाचन हुने क्याम्पस एकाईबाट १ जना छात्रा, १ समावेशी सहित ७ जना

ग. १५ सदस्यीय स्ववियू निर्वाचन हुने क्याम्पस एकाईबाट १ जना छात्रा, २ जना समावेशी सहित ८ जना

घ. एकाई अध्यक्ष स्वतः थप जिल्ला अधिवेशन प्रतिनिधि रहनेछन् ।

**३. उपत्यका बाहिरका स्ववियू निर्वाचन नहुने क्याम्पस एकाईबाट अध्यक्ष, १ छात्रा र १ समावेशी सहित ५जना प्रतिनिधि**

**४. ने. वि. संघ क्याम्पस एकाई अध्यक्षले एकाईको सल्लाहामा निम्नानुसार महाधिवेशन प्रतिनिधिको छनौट गर्ने छ :**

**स्व. वि. निर्वाचन हुने क्याम्पस एकाईबाट :**

अ) ७ सदस्यीय स्ववियू निर्वाचन हुने क्याम्पस एकाईबाट अध्यक्ष, सहित २ जना

आ) ११ सदस्यीय स्ववियू निर्वाचन हुने क्याम्पस एकाईबाट अध्यक्ष, १ छात्रा र १ सहित  ३ जना

ई) १५ सदस्यीय स्ववियू निर्वाचन हुने क्याम्पस एकाईबाट अध्यक्ष, १ जना छात्रा र १ अन्य समावेशी सहित ५ जना

स्पष्टिकरण : विद्यार्थी संगठनका वीच प्रत्यक्ष निर्वाचन हुने Council लाई स्व. वि. यू. मानिनेछ ।

**स्वतन्त्र विद्यार्थी यूनियनबाट :**

अ) ७ सदस्यीय स्व. वि. यू. निर्वाचन हुने क्याम्पसको स्व. वि. यू. बाट १ जना

आ) ११ सदस्यीय स्व. वि. यू. निर्वाचन हुने क्याम्पसको स्व. वि. यू. बाट २ जना

इ) १५ सदस्यीय स्व. वि. यू. निर्वाचन हुने क्याम्पसको स्व. वि. यू. बाट एक छात्रा सहित ३ जना

ई) उपरोक्त बमोजिम स्व. वि. यू. प्रतिनिधिको हकमा ५१ भन्दा माथी संघ समर्थित पदाधिकारी निर्वाचित भएको स्व. वि. यू.लाई मात्र लागू हुनेछ, तर ५१ भन्दा कम पदाधिकारी निर्वाचित भएको स्व. वि. यू. बाट १ जना मात्र राष्टिय महाधिवेशनका लागि प्रतिनिधि रहनेछन् ।

उ) उपरोक्त अवस्थामा स्व. वि. यू सभापति स्वतः थप महाधिवेशन प्रतिनिधि हुनेछन् ।

**क्याम्पस एकाईको अधिकार र दायित्व :**

१. सम्पूर्ण प्रकारका सदस्यताको रेकर्ड राख्ने तथा सो को जानकारी माथिल्लो निकाय समक्ष पेश गर्ने ।

२. केन्द्रीय समितिको नीति निर्देशन पालाना गर्ने ।

३. क्याम्पस सभाले पारित गरेको नीति, निर्देशन र कार्यक्रमलाई प्रभावकारी रुपमा कार्यान्वयन गर्ने गराउने तथा आफ्नो दैनिक कार्यक्रम संचालन गर्नु पर्नेछ ।

४.क्याम्पस एकाईले आफ्नो कार्य क्षेत्र अन्तर्गत सांगठनिक सुदृढिकरण र विस्तारका लागि विभिन्न अन्य कक्षाहरुमा संगठन विस्तार गर्न सक्ने छ ।

५. एकाईले आफ्ना मातहतका कार्यलाई व्यवस्थित तुल्याउन तथा विद्यार्थीहरुलाई विभिन्न रचनात्मक गतिविधिमा संगठित तुल्याउने उद्देश्यले ने. वि. संघको विधानमा उल्लेख भए बमोजिम विभिन्न विभागहरुको गठन गर्न सक्ने छ ।

६. विधानले व्यवस्था गरे बमोजिम महाधिवेशनमा प्रतिनिधित्व गराउने ।

७. एकाईको आर्थिक व्यवस्था पारदर्शी ढंगले राख्ने ।

८. क्याम्पस भित्र रहेका ने. वि. संघका विद्यार्थीहरुलाई सैद्दान्तिक एवं वैचारिक प्रभावका लागि कम्तीमा एक कार्य अवधिमा एउटा प्रशिक्षण कार्यक्रम आयोजना गर्नु पर्ने छ ।

**सभा तथा एकाईका अन्य कार्य विधि :**

१. कुनै पनि बैठकको गणपुरक संख्या ५१ प्रतिशत हुनेछ, बहुमतको निर्णय सभा तथा एकाईको निर्णय मानिनेछ ।

२. कुनै कारणबश अध्यक्षको पद रिक्त हुन आएमा यस नियमावली बमोजिमको प्रक्रियारा रिक्त स्थान पुर्ति गरिनेछ तर आरम्भ हुनु पूर्व माथिल्लो एकाईले विशेष समयावधिका लागि कार्यबाहक अध्यक्षको मनोनयन गर्न सक्नेछ । यस प्रक्रिया अनुरुप नियुक्त भएका कार्य बाहक अध्यक्षको अधिकार र दायित्व अध्यक्ष सरह नै रहनेछ । अन्य पदाधिकारी वा सदस्यहरुको पद रिक्त हुन आएमा अध्यक्षले क्याम्पस सभाको सदस्यहरु मध्येबाट मनोनयन गरी रिक्त स्थानको पूर्ति गर्नेछ ।

३. क्याम्पस एकाईका अध्यक्षले राजिनामा दिन चाहेमा माथिल्लो निकाय समक्ष र अन्य पदाधिकारीहरुले एकाई अध्यक्ष समक्ष पेश गर्नुपर्नेछ ।

४. क्याम्पस एकाई वा अध्यक्ष विरुद्ध अविस्वासको प्रस्ताव दर्ता गर्दा क्याम्पस सभाका साधारण सदस्य संख्याको एक तिहाई सदस्यहरुले लिखित रुपमा कारण सहितको अविस्वासको प्रस्ताव माथिल्लो निकायको स्वीकृति लिई क्याम्पस सभामा प्रस्तुत गर्न सक्नेछ । यसरी पेश गरिएको प्रस्ताव उपर २५ दिन भित्र सभामा छलफल गराउन पर्नेछ । सभाको दुई तिहाई बहुमतले उक्त प्रस्ताव पारित गर्न सक्नेछ ।

५. तोकिएको कार्यावधि सम्म मात्र एकाई अध्यक्षले आवस्यक कारण देखाई एकाईको पूनगर्ठन गर्न सक्नेछ । पूनगर्ठन वर्षमा १ पटक मात्र गर्न सकिने छ ।

६. एकाईको बैठक सामान्यतया महिनाको १ पटक अनिवार्य रुपमा बस्नु पर्नेछ । बैठक सम्बन्धी लिखित जानकारी एकाईका अन्य सदस्यहरुलाई २ दिन पूर्व गराउनु पर्ने छ । लगातार विना सूचना ३ पटक अनुपस्थित हुने सदस्यहरुका पद रिक्त हुन गएको मानिनेछ ।

## परिच्छेद ८

**विस्वविद्यालय क्याम्पस समिति :**

**विस्वविद्यालय क्याम्पस सभा :**

१. विश्वविद्यालय अन्तर्गत केन्द्रीय क्याम्पसहरुमा विश्वविद्यालय क्याम्पस समिति गठन गरिने छ ।

२. विस्वविद्यालय क्याम्पसका केन्द्रीय विभागहरुमा भर्ना भएका विद्यार्थीहरुबाट प्रत्येक २० साधारण सदस्यको १ का दरले विस्वविद्यालय अधिवेशन प्रतिनिधि छनौट गरिनेछ । ५ जना प्रतिनिधि भन्दा बढी प्रतिनिधि आउने विभागबाट समावेशी प्रतिनिधित्व हुन अनिवार्य छ । यसरी प्रतिनिधित्व गराउंदा प्रत्येक केन्द्रीय विभागबाट १ जनाको दरले प्रतिनिधित्व हुन अनिवार्य हुनेछ ।

३. विस्वविद्यालय क्याम्पस समितिका वर्तमान पदाधिकारी एवं सदस्यहरु

४. ने. वि. संघको तर्फबाट स्वतन्त्र विद्यार्थी यूनियनमा विजयी भएका सम्पूर्ण पदाधिकारी एवं सदस्यहरु

५. प्रत्येक संकाय उप समिति र प्रत्येक छात्रावास उपसमिति ( छात्र, छात्रा ) का संयोजकहरु

६. छात्रावासका प्रत्येक ब्लकबाट २,२ जनाका दरले निर्वाचित प्रतिनिधिहरु

७. विश्वविद्यालय समितिका अध्यक्षबाट समावेशीका आधारमा मनोनित ७ जना

**स्पस्टिकरण** : माथि जुन सुकै कुरा लेखिएको भए पनि ५०० भन्दा कम नियमित विद्यार्थी संख्या भएका विस्वविद्यालयका क्याम्पसका हकमा भने सो क्याम्पसमा अध्ययनरत ने. वि. संघका सम्पूर्ण साधारण सदस्यहरु नै विस्वविद्यालय क्याम्पस सभाका सदस्य हुनेछन् ।

**विस्वविद्यालय क्याम्पस सभा सञ्चालन तथा कार्यविधि :**

१. यसको अध्यक्षता विस्वविद्यालय क्याम्पस समितिका अध्यक्षले गर्नेछन् । अध्यक्षको अनुपस्थितिमा समितिका उपाध्यक्षले वा अध्यक्षले अधिकार दिएको व्यक्तिले गर्नेछन् ।

२. वर्षको कम्तिमा २ पटक विस्वविद्याल क्याम्पस सभाको बैठक बस्नुपर्ने छ ।

३. यसको कार्यकाल सामान्यतया २ वर्षको हुनेछ ।

४. यसले विस्वविद्यालय क्याम्पस समितिको वार्षिक कार्यक्रमहरु उपर छलफल, समिक्षा, अनुगमन गर्न सक्नेछ र समितिलाई आवस्यक निर्देशन प्रदान गर्ने छ ।

५. विस्वविद्यालय क्याम्पस सभाको बैठक केन्द्रीय प्रतिनिधिको पर्यवेक्षणमा वर्तमान समितिले गराउनेछ

६. विस्वविद्यालय क्याम्पस सभा संचालनको लागि प्रथम पटक कुल प्रतिनिधिको ५१ प्रतिशतको उपस्थिति अनिवार्य हुनेछ । तर प्रथम पटक मा ५१ प्रतिशत प्रतिनिधि उपस्थित नभए ७ दिन पछि दोस्रो पटक ३३ प्रतिशतको उपस्थितिले पनि बैठक संञ्चालन गर्न सक्नेछ । यसमा उपस्थितको सामान्य बहुमतले गरेको निर्णय मान्य हुनेछ ।

**विस्वविद्यालय क्याम्पस समितिको गठन :**

१. विस्वविद्यालय क्याम्पस सभाले केन्द्रीय प्रतिनिधिको रोहवरमा निर्वाचन प्रक्रियाद्वारा क्याम्पस समितिको १ अध्यक्ष १ सचिव र २४ जना सदस्यको निर्वाचन गर्ने छ

२. २४ जना सदस्यहरुमा छात्रा ३ , आदिवासी जनजाती २, मधेशी २, दलित, अपांग, मुस्लिम, अल्पसंख्यक मध्येबाट २ ,  खुला तर्फ १५ सदस्यको निर्वाचन गर्ने छ । यसरी निर्वाचन गर्दा सबै संकायको प्रतिनिधित्व हुनु पर्दछ ।

३. समितिको अध्यक्षले  प्रतिनिधि मध्येबाट १५ जना सदस्य समावेशी रुपमा मनोनित गर्नेछन् । आवस्यकता अनुसार एकाईको परामर्शमा अध्यक्षले सदस्य थप गर्न सक्नेछन् ।

४. अध्यक्षले प्रतिनिधिहरु मध्येबाट पदाधिकारीहरुको मनोनित गर्नेछन् ।

५. ने. वि. संघको तर्फबाट स्व. वि. यू. मा विजयी भएका सम्पूर्ण पदाधिकारी एवं सदस्यहरु प्रत्येक संकाय उपसमिति र प्रत्येक छात्रावास उपसमितिका संयोजकहरु विस्वविद्यालय क्याम्पस समितिका पदेन सदस्य रहनेछन् ।

६. विस्वविद्यालय क्याम्पस समितिको कार्यकाल सामान्यतया २ वर्षको रहनेछ ।

८. माथि समितिको संख्या जती सुकै व्यवस्था भए पनि नेपाल विद्यार्थी संघका साथीहरुको आम सहमतिमा आवस्यकता अनुसारको संख्यामा समिति क्रियाशील गराउन सकिने छ ।

**विश्वविद्यालय क्याम्पस समितिबाट देहाय बमोजिम महाधिवेशन प्रतिनिधि रहनेछन् :**

१) त्रिभुवन विश्वविद्यालय क्याम्पस समितिबाट अध्यक्ष,  छात्रा २, आदिवासी जनजाती १, मधेशी १, दलित १, अपांग/मुस्लिम/अल्पसंख्यक मध्येबाट १ जना समावेशी सहित १५ जना प्रतिनिधि

२) नेपाल संस्कृत विश्वविद्यालय क्याम्पस समितिबाट अध्यक्ष, छात्रा १, समावेशी १ सहित ६ जना प्रतिनिधि

३) पूर्वाञ्चल विश्वविद्यालय क्याम्पस समितिबाट अध्यक्ष, छात्रा १, समावेशी १ सहित ६ जना प्रतिनिधि

४) पोखरा विश्वविद्यालय क्याम्पस समितिबाट अध्यक्ष, छात्रा १, समावेशी १ सहित ६ जना प्रतिनिधि

५) काठमाडौं  विश्वविद्यालय क्याम्पस समितिबाट अध्यक्ष, छात्रा १, समावेशी १ सहित ६ जना प्रतिनिधि

६) मध्यपश्चिम  विश्वविद्यालय क्याम्पस समितिबाट अध्यक्ष, छात्रा १, समावेशी १ सहित ६ जना प्रतिनिधि

७) सुदुरपश्चिम  विश्वविद्यालय क्याम्पस समितिबाट अध्यक्ष, छात्रा १, समावेशी १ सहित ६ जना प्रतिनिधि

**स्पष्टिकरण** : विश्वविद्यालय क्याम्पस समिति भन्नाले प्रत्येक विश्वविद्यालयका केन्द्रीय क्याम्पसलाई बुझाउनेछ ।

# परिच्छेद ९

**जिल्ला सभा :**

**१ क्याम्पस इकाईबाट :**

- **स्ववियू निर्वाचन हुने क्याम्पस इकाईबाट, जिल्ला अधिवेशन प्रतिनिधि निम्नानुसार हुनेछ :**

  क. ७ सदस्यीय स्ववियू निर्वाचन हुने क्याम्पस एकाईबाट १ जना छात्रा, १ समावेशी सहित ६ जना

  ख. ११ सदस्यीय स्ववियू निर्वाचन हुने क्याम्पस एकाईबाट १ जना छात्रा, १ समावेशी सहित ७ जना

  ग. १५ सदस्यीय स्ववियू निर्वाचन हुने क्याम्पस एकाईबाट १ जना छात्रा, जना समावेशी सहित ८ जना

  घ. एकाई अध्यक्ष स्वतः थप जिल्ला अधिवेशन प्रतिनिधि रहनेछन् ।

- **स्ववियू निर्वाचन नहुने क्याम्पस एकाईबाट अध्यक्ष, १ छात्रा र १ समावेशी सहित ५जना प्रतिनिधि**
- ने. वि. संघ CTEVT एकाईबाट अध्यक्ष र १ छात्रा सहित ३ जनाले जिल्ला अधिवेशनमा प्रतिनिधित्व गर्नेछन् ।

**स्पष्टिकरण :** डिप्लोमा तहको ने. वि. संघ CTEVT एकाईलेमात्र जिल्ला अधिवेशनमा प्रतिनिधित्व गर्नेछ ।

**२. स्वतन्त्र विद्यार्थी यूनियनबाट**

क. जिल्ला अन्तर्गत क्याम्पसहरुमा स्वतन्त्र विद्यार्थी यूनियनमा नेपाल विद्यार्थी संघको तर्फबाट निर्वाचित पदाधिकारी एवं सदस्यहरु मध्येबाट ७ सदस्यीय स्व. वि. यू. बाट कम्तीमा १ जना छात्रा पर्ने गरि २ जना , ११ सदस्यीय स्व. वि. यू. बाट १ जना छात्रा पर्ने गरी ३ जना र १५ सदस्यीय स्व. वि. यू. बाट १ छात्रा पर्ने गरी ४ जना प्रतिनिधि

ख. स्व. वि. यू. सभापति स्वतः थप अधिवेशन प्रतिनिधि रहनेछन् ।

३. प्रत्येक निर्वाचन क्षेत्रको क्षेत्रिय सभाबाट प्रतिनिधित्व गर्ने २५ जना

४. क्षेत्रिय कार्य समितिले पठाउने अध्यक्ष सहित ५ जना

५. जिल्ला अध्यक्षबाट समावेशीका आधारमा मनोनित ७ जना

६. वर्तमान जिल्ला कार्य समितिका पदाधिकारी एवं सदस्यहरु

**जिल्ला सभा सञ्चालन कार्यविधि तथा कार्यहरु :**

१. जिल्ला सभाको अध्यक्षता जिल्ला समितिका अध्यक्षले गर्नेछन् ।

२. वर्षमा कम्तिमा एक पटक जिल्ला सभाको बैठक बस्नु पर्ने छ ।

३. जिल्ला सभाको कार्यकाल २ वर्षको हुनेछ ।

४. जिल्ला सभाले जिल्ला समितिको वार्षिक कार्यक्रमहरु निर्धारण गर्ने तथा छलफल समिक्षा , अनुगमन गर्न सक्ने छ । समितिलाई आवस्यक निर्देशन प्रदान गर्न सक्ने छ ।

५. जिल्ला कार्य समितिलाई आवस्यक मद्धत पुयाउन उद्देश्यले विभिन्न समन्वय समिति उपसमिति गठन गर्न सक्ने छ । त्यस्ता समितिका संयोजकहरु कार्य समितिका सदस्यहरु मध्येबाट राख्नु पर्नेछ ।

६. जिल्ला सभाले जिल्ला समितिको निर्वाचन गर्नेछ ।

**जिल्ला समिति :**

१. जिल्ला अधिवेशनले १ निर्वाचन क्षेत्र भएको जिल्लामा ने. वि. संघको १ अध्यक्ष, १ जना सचिव र ९ जना सदस्यको निर्वाचन गर्ने छ

२. ९ जना सदस्यहरुमा छात्रा २ , आदिवासी जनजाती १ दलित, अपांग, मुस्लिम, मधेशी, अल्पसंख्यक मध्यबाट १ , क्याम्पस एकाईबाट २ र खुला तर्फ ३ सदस्यको निर्वाचन गर्ने छ ।

३. जिल्ला अध्यक्षले जिल्ला प्रतिनिधि मध्येबाट ६ जना सदस्य समावेशी रुपमा मनोनित गर्नेछ ।

४. जिल्ला अध्यक्षले निर्वाचित सदस्यहरु मध्येबाट १ उपाध्यक्ष, १ सहसचिव, १ कोषाध्यक्ष मनोनित गर्नेछ ।

५. जिल्ला अधिवेशनले २ देखि ५ निर्वाचन क्षेत्र भएको जिल्लामा ने. वि. संघको १ अध्यक्ष १ जना सचिव र १३ जना सदस्यको निर्वाचन गर्ने छ

६. १३ जना सदस्यहरुमा छात्रा ३ , आदिवासी जनजाती १ दलित, अपांग, मुस्लिम, मधेशी, अल्पसंख्यक मध्यबाट १ , क्याम्पस एकाईबाट २ र खुला तर्फ ६ सदस्यको निर्वाचन गर्ने छ ।

७. जिल्ला अध्यक्षले जिल्ला प्रतिनिधि मध्येबाट ८ जना सदस्य समावेशी रुपमा मनोनित गर्नेछ ।

८. जिल्ला अध्यक्षले निर्वाचित सदस्यहरु मध्येबाट १ उपाध्यक्ष, १ सहसचिव, १ कोषाध्यक्ष मनोनित गर्नेछ ।

९. जिल्ला अधिवेशनले ६ निर्वाचन क्षेत्र र सो भन्दा बढी क्षेत्र भएको जिल्लामा ने. वि. संघको १ अध्यक्ष १ जना सचिव र १९ जना सदस्यको निर्वाचन गर्ने छ

१०. १९ जना सदस्यहरुमा छात्रा ३ , आदिवासी जनजाती २ दलित, अपांग, मुस्लिम, मधेशी, अल्पसंख्यक मध्यबाट १ , क्याम्पस एकाईबाट ३ र खुला तर्फ १० सदस्यको निर्वाचन गर्ने छ ।

११. जिल्ला अध्यक्षले जिल्ला प्रतिनिधि मध्येबाट १२ जना सदस्य समावेशी रुपमा मनोनित गर्नेछ ।

१२. जिल्ला अध्यक्षले निर्वाचित सदस्यहरु मध्येबाट १ उपाध्यक्ष, १ सचिव, १ सहसचिव, १ कोषाध्यक्ष मनोनित गर्नेछ ।

१३. जिल्ला समितिले आफ्ना मातहत निकायहरुमा समन्वय ल्याई प्रभावकारी रुपमा संगठन विस्तार गर्नेछ ।

१४. जिल्ला समितिको बैठक प्रत्येक २ महिनामा बस्नु पर्नेछ ।

**कार्य संचालन र दायित्व :**

१. जिल्ला समितिको नियमित बैठक महिनामा एक पटक बस्नु पर्ने छ । कम्तिमा पनि प्रत्येक ६ महिनामा एक बैठक केन्द्रीय सदस्य वा प्रतिनिधिको रोहवरमा राख्नु पर्नेछ ।

२. जिल्ला सभाले पारित गरेका नीति, निर्देशन र कार्यक्रमलाई कार्य समितिले प्रभावकारी रुपमा कार्यन्वयन गर्नुका साथै आफ्ना वार्षिक कार्यक्रमहरु जिल्ला सभामा छलफलका लागि पेश गर्नु पर्नेछ ।

३. जिल्ला कार्य समितिले जिल्ला स्तरिय संगठन तथा कार्यकर्ताको रेकर्ड, सदस्यता वितरणको रेकर्ड, संगठनको प्रगति उपर समिक्षा आदि नियमित रुपममा गरि सोको जानकारी केन्द्रीय समितिमा निरन्तर प्रवाहित गर्नेछ ।

४. जिल्ला अन्तर्गतका क्याम्पस एकाईहरुमा आवस्यक समन्वय ल्याई संगठनको प्रभाव विस्तार गर्नेछ ।

५. यस नियमावलीमा उल्लेख भएका तल्ला इकाई संग सम्बन्धित रहेका विभिन्न कार्यहरु गर्नेछ ।

**६. जिल्ला सभाबाट निर्वाचित महाधिवेशन प्रतिनिधि :**

- **१** संसदीय निर्वाचन क्षेत्र भएको जिल्ला शाखाबाट छात्रा १, अन्य समावेशी १, जिल्ला अध्यक्ष सहित **५** जना महाधिवेशन प्रतिनिधि
- **२** संसदीय निर्वाचन क्षेत्र भएको जिल्ला शाखाबाट छात्रा १ अन्य समावेशी १, जिल्ला र क्षेत्रिय अध्यक्ष सहित **८** जना महाधिवेशन प्रतिनिधि
- **३** संसदीय निर्वाचन क्षेत्र भएको जिल्ला शाखाबाट छात्रा १, अन्य समावेशी २, जिल्ला र क्षेत्रिय अध्यक्ष सहित **१०** जना महाधिवेशन प्रतिनिधि
- **४** संसदीय निर्वाचन क्षेत्र भएको जिल्ला शाखाबाट छात्रा १, अन्य समावेशी २, जिल्ला र क्षेत्रिय अध्यक्षसहित **१२** जना महाधिवेशन प्रतिनिधि
- **५** संसदीय निर्वाचन क्षेत्र भएको जिल्ला शाखाबाट छात्रा २, अन्य समावेशी ३, जिल्ला र क्षेत्रिय अध्यक्षसहित **१६** जना महाधिवेशन प्रतिनिधि
- **६** संसदीय निर्वाचन क्षेत्र भएको जिल्ला शाखाबाट छात्रा २, अन्य समावेशी ३, जिल्ला र क्षेत्रिय अध्यक्षसहित **१८** जना महाधिवेशन प्रतिनिधि
- **७** संसदीय निर्वाचन क्षेत्र भएको जिल्ला शाखाबाट छात्रा २, अन्य समावेशी ४, जिल्ला र क्षेत्रिय अध्यक्षसहित **२०** जना महाधिवेशन प्रतिनिधि
- **९** संसदीय निर्वाचन क्षेत्र भएको जिल्ला शाखाबाट छात्रा २, अन्य समावेशी ४, जिल्ला र क्षेत्रिय अध्यक्षसहित **२२** जना महाधिवेशन प्रतिनिधि
- **१०** संसदीय निर्वाचन क्षेत्र भएको जिल्ला शाखाबाट छात्रा २, अन्य समावेशी ४, जिल्ला र क्षेत्रिय अध्यक्षसहित **२३** जना महाधिवेशन प्रतिनिधि

७. स्वतन्त्र वि जिल्ला र क्षेत्रिय अध्यक्ष द्यार्थी यूनियनको निर्वाचन नभएका तर जिल्ला अधिवेशनमा सहभागी क्याम्पस एकाईका प्रतिनिधि मात्र मतदाता र उम्मेदवार हुन पाउने गरी जम्मा प्रतिनिधिको ५ प्रतिशत हुन आउने गरी महाधिवेशन प्रतिनिधिको चयन गरिनेछ । यो व्यवस्था संपूर्ण विश्वविद्यालयहरुका स्ववियू निर्वाचन/ काउन्सील नहुने  क्याम्पस एकाईलाई लागू हुनेछ । साथै छट्टैछट्टै विश्वविद्यालयहरुको आ आफ्नै क्याम्पस एकाई प्रतिनिधिहरुबाट महाधिवेशन प्रतिनिधिको छनौट गरिनेछ ।

८. जिल्ला अधिवेशनमा CTEVT एकाईबाट भाग लिएका जिल्ला अधिवेशन प्रतिनिधि मात्र मतदाता एवं उम्मेदवार हुन पाउने गरि जम्मा प्रतिनिधिको ५ प्रतिशत हुन आउने गरी महाधिवेशन प्रनितिधिको छनौट गर्नेछ ।

९. स्ववियू निर्वाचन/काउन्सील नहुने विश्वविद्यालय अन्तर्गत उपत्यकाका क्याम्पसहरु र CTEVT छुट्टाछुटै भेला मार्फत महाधिवेशन प्रतिनिधि छनौट गरिनेछ । यो भेला काठमाण्डौ , ललितपुर र भक्तपुरको जिल्ला अधिवेशनको दिन आधिकारीक प्रतिनिधिको रोहवरमा सम्पन्न हुनेछ । महाधिवेशन प्रतिनिधि छनौट प्रक्रियामा विभिन्न विश्वविद्यालय अन्तर्गतका क्याम्पसहरुबाट एकाई अध्यक्ष, छात्रा १ जना र अन्य समावेशी

१ सहित ५ जना प्रतिनिधि हुनेछन् । CTEVT एकाईबाट अध्यक्ष, १ छात्रा सहित ३ जना प्रतिनिनधि हुनेछन् । यो छनौट प्रकिया प्रत्येक विश्वविद्यालय र CTEVT को छुट्टाछुट्टै हुनेछ ।

**स्पष्टीकरण** : अन्य समावेशी अन्तर्गत आदीवासी जनजाती, दलित, मधेशी, मुस्लिम, अल्पसंख्यक, पिछडिएको वर्ग, अपाङ्ग , तेस्रोलिङ्गि पर्दछन् ।

**१०.जिल्ला शाखाबाट** : जिल्ला समितिको परामर्शमा अध्यक्षबाट प्रत्येक जिल्लाबाट १ जना महाधिवेशन प्रतिनिधिको चयन हुनेछ ।

**११. केन्द्रीय समन्वय समितिहरुबाट निम्नानुसार महाधिवेशन प्रतिनिधिहरु चयन हुनेछन् :**

अ) नेपाल संस्कृत विश्वविद्यालय केन्द्रीय समन्वय समितिबाट अध्यक्ष, छात्रा १ र अन्य समावेशी १ सहित ५ जना

आ) पूर्वाञ्चल विश्वविद्यालय केन्द्रीय समन्वय समितिबाट अध्यक्ष, छात्रा १ र अन्य समावेशी १ सहित ५ जना

इ) पोखरा विश्वविद्यालय केन्द्रीय समन्वय समितिबाट अध्यक्ष, छात्रा १ र अन्य समावेशी १ सहित ५ जना

ई) काठमाण्डौ विश्वविद्यालय केन्द्रीय समन्वय समितिबाट अध्यक्ष, छात्रा १ र अन्य समावेशी १ सहित ५ जना

उ) प्राविधिक विद्यार्थी परिषद केन्द्रीय समन्वय समितिबाट अध्यक्ष, छात्रा १ र अन्य समावेशी १ सहित ५ जना

ऊ) CTEVT केन्द्रीय समन्वय समितिबाट अध्यक्ष, छात्रा १ र अन्य समावेशी १ सहित ५ जना

# परिच्छेद १०

**अंचल समन्वय समिति :**

१. नेपाल अधिराज्य भर भौगोलिक विभाजनका आधारमा निर्धारित १४ अञ्चलहरुमा प्रत्येकमा बढीमा १५ सदस्यीय अञ्चल समन्वय समिति गठन गरिने छ ।

२. उपत्यका भित्र बढीमा १५ सदस्यीय उपत्यका अंचल समन्वय समिति गठन गरिने छ ।

२. अञ्चल समन्वय समितिको संयोजक सम्बन्धित अञ्चलको प्रतिनिधित्व गर्ने केन्द्रीय सदस्य हुनेछ ।

३. सम्बन्धित अञ्चल भित्रका जिल्ला अध्यक्षहरु सो अञ्चल समन्वय समितिको पदेन सदस्य हुनेछन् ।

४. सम्बन्धित अञ्चल भित्रका जिल्ला अध्यक्ष, क्याम्पस इकाई अध्यक्ष, स्व. वि. यू. सभापति र अन्य विद्यार्थी नेतृत्वमा रहिसकेका मध्येबाट अञ्चल समन्वय समितिमा संयोजकले मनोनित गर्नेछन् ।

५. मातहतका निकायहरुमा समन्वय ल्याई संगठनको नीति तथा कार्यक्रम कार्यन्वयन गराउन अञ्चल भित्रको संगठन विस्तार सुदृढीकरणका निम्ति रचनात्मक कार्यहरु गर्नेछ ।

**स्पष्टिकरण :** वाग्मती अञ्चल भित्र उपत्यकाका बाहेक ५ जिल्ला पर्दछन् ।

# परिच्छेद ११

**क्षेत्रिय समन्वय समिति :**

१. भौगोलिक क्षेत्रका आधारमा निर्धारित पांच विकास क्षेत्रमा क्षेत्रिय समन्वय समिति गठन गरिनेछ ।

२. क्षेत्रिय समन्वय समितिको संयोजक र सचिव सम्बन्धित विकास क्षेत्रको प्रतिनिधित्व गर्ने केन्द्रीय उपाध्यक्ष र सहमहामन्त्रि हुनेछन् ।

३. सम्बन्धित विकास क्षेत्र भित्रका अञ्चल केन्द्रीय सदस्यहरु यस समितिको पदेन सदस्य रहनेछन् ।

४. सम्बन्धित विकास क्षेत्र भित्रका जिल्ला अध्यक्ष, क्याम्पस एकाई अध्यक्ष, स्व. वि. सभापति एवं प्रत्याशीहरु र ने. वि. संघका अन्य महत्वपूर्ण साथीहरुबाट क्षेत्रिय समन्वय समितिका संयोजकले मनोनित गर्नेछन् ।

५. क्षेत्र भित्रका अञ्चल समन्वय समिति, जिल्ला समिति, क्याम्पस एकाई , स्व. वि. यू. का वीचमा आवस्यक समन्वय ल्याई संगठनको नीति तथा कार्यक्रमहरु कार्यन्वयन गर्न गराउन संगठन विस्तार र सुदृढीकरणका लागि विभिन्न सांगठनिक रचनात्मक एवं प्रशिक्षण आदि कार्यक्रमहरु गर्ने गराउने ।

# परिच्छेद १२

**विस्वविद्यालय समन्वय समिति :**

१.देश भित्रका विस्वविद्यालयहरुमा शैक्षिक सवालमा केन्द्रीत रहने गरि विस्वविद्यालय समन्वय समिति गठन गरिनेछ ।

२. सम्बन्धित विस्वविद्यालयबाट निर्वाचित केन्द्रीय सदस्य विस्वविद्यालय समन्वय समितिको संयोजक हुनेछन्
३. सम्बन्धित विस्वविद्यालय अन्तर्गतका आगिंक एवं सम्बन्धन प्राप्त क्याम्पसहरुमा बहाल रहेका इकाई अध्यक्ष, स्व. वि. यू. सभापति मध्येबाट संयोजकले बढीमा २० जना सम्मको सदस्यको मनोनित गरि यसैबाट पदाधिकारीको चयन गरिनेछ ।

## परिच्छेद १३

**स्वतन्त्र विद्यार्थी यूनियन परिषद :**

**स्व. वि. यू. परिषद सभा :**

नेपाल भरिका क्याम्पसहरुमा ने. वि. संघको तर्फबाट उम्मेदवार भई विजय भएका स्व. वि. यू. पदाधिकारी एवं सदस्यहरु मात्र रहने गरि एक स्व. वि. यू. परिषद सभा गठन हुनेछ ।

**स्व. वि. यू. परिषद गठन :**

१. स्व. वि. यू. परिषदको राष्टिय अधिवेशनमा जुनसुकै विस्वविद्यालय वा आंगिक वा पब्लिक क्याम्पसबाट निर्वाचित हुने प्रतिनिधिलाई मताधिकारको व्यवस्था रहनेछ ।
२. स्व. वि. यू. परिषदमा सभापति सहित बढीमा ३५ जनाको हुनेछ ।
३. राष्टिय अधिवेशन प्रतिनिधिहरु मध्ये निर्वाचित स्व. वि. यू. सभापतिहरु मध्येबाट निर्वाचित कार्य समितिका सभापति
४. राष्टिय अधिवेशन प्रतिनिधिहरुबाट निर्वाचित सभापतिले निर्वाचित सदस्यहरु मध्येबाट मनोनित एक उपसभापति, एक सचिव, एक सहसचिव र एक कोषाध्यक्ष
५. राष्टिय अधिवेशन प्रतिनिधिहरुबाट कम्तिमा संस्कृत विस्वविद्यालयबाट १, काठमाण्डौ विस्वविद्यालयबाट १ , पोखरा विस्वविद्यालयबाट १ , पूर्वाञ्चल विस्वविद्यालयबाट १, त्रिभुवन विस्वविद्यालयबाट ५, संपूर्ण छात्रा प्रतिनिधिहरु बाट ३, काठमाण्डौ उपत्यकाका क्याम्पसबाट १ प्रत्येक विकास क्षेत्रबाट २ २ , संपूर्ण आगिंक क्याम्पसबाट २ , आंगिक क्याम्पस बाहेक संपूर्ण विस्वविद्यालयबाट सम्बन्धन प्राप्त क्याम्पस मध्येबाट ३ , संपूर्ण प्राविधिक क्याम्पसहरुबाट १ सदस्यको प्रतिनिधित्व रहनेछ ।

## परिच्छेद १४

**प्राविधिक विद्यार्थी परिषद :**

१. नेपालभरका विभिन्न विभिन्न विश्वविद्यालय अन्तर्गतका प्राविधिक क्याम्पसहरुमा रहेका ने. वि. संघका विभिन्न एकाईहरुका तथा ने. वि. संघका तर्फबाट उम्मेदवार भई विजयी भएका स्व. वि. यू. पदाधिकारी एवं सदस्य मात्र रहने गरी एक प्राविधिक विद्यार्थी परिषद गठन हुनेछ ।
२. केन्द्रीय समितिमा प्राविधिक क्षेत्रमा अधिकतम मतबाट निर्वाचित केन्द्रीय सदस्य प्राविधिक विद्यार्थी परिषदको संयोजक रहनेछन् ।
३. प्राविधिक विद्यार्थी परिषदका संयोजकले सबै विश्वविद्यालय अन्तर्गतका प्राविधिक विषयको प्रतिनिधित्व रहने गरि समावेशी प्रतिनिधित्वका आधारमा बढीमा ३५ जना सम्मको परिषदको गठन गरिने छ ।

## परिच्छेद १५

**CTEVT समन्वय समिति :**

१. केन्द्रीय समितिमा CTEVT बाट प्रतिनिधित्व गर्ने केन्द्रीय सदस्यको संयोजकत्वमा CTEVT समन्वय समितिको गठन गरिनेछ ।
२. अध्यक्षले समावेशी प्रतिनिधित्व हुने गरि समन्वय समितिको विस्तार गर्नेछन् ।
३. शैक्षिक र वर्गिय हक हितका निम्ति CTEVT समन्वय समिति क्रियाशील रहनेछ ।

**जय नेपाल !**

**नेपाल विद्यार्थी संघ**
**केन्द्रीय कार्य समिति**
**धोविधारा , काठमाण्डौं**